पाटनका शासक

# योगनरेन्द्र मल्लका मुद्राहरु

प्रतिवेदन लेखन

निकेश महर्जन (भिक्षु खेमानन्द)
रो.नं २०७५(०२)

नेपालि ईतिहास संस्कृति तथा पुरातत्व केन्द्रीय विभाग
त्रिभुवन विश्वविद्यालय, कि:पु
२०७७

**Subject**

Numismatics, NeHCA-568

3rd Semester

2077 (2020)

**Lecturer** :- Prof. Dr. Mala Malla.

## विषयसूची

## योगनरेन्द्र मल्ल

सन् १६१९ मा पाटन, काठमाण्डौं बाट अलग गरी स्वतन्त्र राज्यको रुपमा सिद्धीनरसिंह मल्लले घोषना गरी सके पछी, उनी पाटनका प्रथम स्वतन्त्र शासक बने, स्वतन्त्र शासकको हैसियतमा मुद्रा प्रचलनमा ल्याउने सो समयमा प्रचलन रहेको पाईन्छ । पाटनमा स्वतन्त्रको सुरुवाती देखिनै प्रशारित गरीएका मुद्राहरु प्राप्त भएका छन् । ललितपुरमा मुद्रा प्रसारण गर्ने प्रमुख शासकहरु मध्ये प्रथम शासक सिद्धीनरसिंह मल्ल हो भने उनिपछि, जय योगनरेन्द्र मल्ल अर्थात योगनरेन्द्र मल्ल लाई लिन सकिन्छ ।

योगनरेन्द्र मल्ल आफ्ना पिता श्रीनिवास मल्ल गद्दी समालिएका अवस्थामानै आफ्ना पिता संग विद्रोह गरी सन् १६८५ राजगद्दीमा बसेका थिए । उनी सन् १६८४ मा राजकुमार को अवस्थामानै सुकी मुद्रा समेत प्रसारण गरी सकेका थिए । राजगद्दी सम्हालि सकेपछी उन्ले विभिन्न समयमा विभिन्न प्रकारका मुद्राहरु प्रचलनमा ल्याएको पाईन्छ । पाईएका सबै मुद्राहरुमा यीन्का स्त्रीहरुका नाम उल्लेखगरीएको पाईन्छ, यिनि मृत्यु हुदाँ उन्का पत्नी ३३ जना सति गएको प्रसंग र जस्को स्मरणमा पाटनमा च्यासिंदेग बनाएको उल्लेख छन्।

*नेपाली राष्ट्रिय मुद्रा,* पुस्तकमा जोशी सत्यमोहनले योगनरेन्द्र मल्लको मुद्रालाई पहिलो, दोस्रो, गरी छैटौं सम्म विभाजन गरीएको पाईन्छन् भने विशेस गरी सुकी मुद्राको पनि उल्लेख गरीएको पाईन्छ।

१ पहिलो किसिमको मुद्रा



अग्रभाग पृष्ठभाग

अग्रभागमा बिन्दु युक्त घेरा भित्र गोलाकार आकृति र बीचको भागमा आभरणले सजिएको खड्ग, त्यस माथि पात सहितका थोप्ले फुल र दायाँ बायाँ चन्द्र र सुर्यको आकृति छन्, छरीएका अक्षरमा खड्गको दायाँ र बायाँ गरी "संगीतार्णव पारग श्री श्री जय योगनरेन्द्र मल्ल" लेखीएको छन्।

पृष्टभागमा बिन्दु युक्त घेरा भित्र गोलाकार आकृति र बीचको भागमा आभरणले सजिएका त्रिशूल अंकीत गरीएको छन् त्यस्को ठीक मुनि कमलको फूल र "८२०" अंक पनि अंकीत गरीएको पाईन्छ र त्रिशूलको दायाँ र बायाँ गरी छरीएका अक्षरमा "श्री नेपाल चूडामणि श्री श्री योगनरेन्द्र मल्ल" लेखिएका छन्।

२ दोस्रो किसिमका मुद्रा



अग्रभाग

यस मोहर मुद्राको अग्रभागमा दुईवटा खप्टिएका स्वस्तीक यन्त्र छन्। मध्यभागमा चतुष्कोणहरु छन्। कुना कुनामा साना रेखाहरु चारैतिरबाट मध्यभागको चतुष्कोणहरुको छेउसम्म तानीएका छन्। चतुष्कोणमा “श्री ३” तलको चतुष्कोण भित्र “लोक नाथ” र बिच्चमा खड्ग चित्र अंकीत गरीएको छन् भने ओरिपरि “संगीतार्णव पारग श्री श्री योगनरेन्द्र मल्लदेव” उल्लेख गरीएको छन् ।

पृष्ठभागमा ठुलो आकृतिमा चतुष्कोण राखीएको छ र यस भित्र चतुष्कोण हाली चारवटा त्रिकोणहरु निकालेका छन्। मध्य भागको चतुष्कोण भित्र सूर्य र चन्द्र आकृति दायाँ र बायाँ गरी राखीएको छ। यस् बाहिर त्रिकोणमा पार्सि र सिन्दुरदानीका चित्र रहेको छन्, दुईवटामा भने “यो” र “वी” अक्षर छन् । ठुलो चतुष्कोणलाई फुलपाति बुट्टाले घेरा दिएको छ र प्रत्येक घेरामा एक एक अक्षर छन्, शिरमा २ वटा चन्द्रमा छन् यस्को तल्लो भागमा भने “८०५” अंक छन्। छरीएका अक्षरमा “योगलक्ष्मी देवी” उल्लेख गरीएको छ।

३ तेस्रो किसिमको मुद्रा





पृष्ठभाग अग्रभाग

यस मुद्राको अग्रभागमा दुईवटा खप्टिएका स्वस्तीक यन्त्र छन्। मध्यभागमा चतुष्कोणहरु छन्। कुना कुनामा साना रेखाहरु चारैतिरबाट मध्यभागको चतुष्कोणहरुको छेउसम्म तानीएका छन्। चतुष्कोणमा "श्री ३" तलको चतुष्कोण भित्र "लोक नाथ" र बिच्चमा खड्ग चित्र अंकीत गरीएको छन् भने ओरिपरि "संगीतार्णव पारग श्री श्री योगनरेन्द्र मल्लदेव" उल्लेख गरीएको छन् ।

पृष्ठभागमा दुईवटा त्रिकोण र वारपार हुने गरी एक चतुष्कोण राखीएको छ भने बाहिर आठवटा चुच्चे त्रिकोण निकालीएको पाईन्छ भने बीच्चमा संख दायाँ बायाँ आभरण युक्त सिन्दूरदानी छ । दाया बायाँ सुर्यको आकृति अंकीत गरीएको छ, छरीएका अक्षरहरुमा "श्री प्रतापलक्ष्मी देवी" र "श्री नरेन्द्र लक्ष्मीदेवी" साथै "८०५" अंक उल्लेख गरीएको पाईन्छन् ।

४ चौथो किसिमको मुद्रा



अग्रभाग

यस् मुद्राको अग्रभागमा बीचमा सानो चतुष्कोण छन् जस् भित्र “लोक नाथ” अक्षर र खड्ग अंकीत छन्, उक्त सानो चतुष्कोणलाई अर्को ठुलो चतुष्कोणले भित्र चारवटा त्रिको हुने गरी बनाएको छ, माथी, दायाँ र बायाँ गरी तीन वटा “श्री” छन् भने तलको त्रिकोणमा फुलको बुट्टा राखीएको छ, यसपछी अर्को दूई वटा चतुष्कोण राखीएको छ जस्को आकृतिले बाहीय भागमा चुच्चे त्रिकोण आठ वटा निकालिएको पाईन्छ। उक्त मुद्रामा छरीने गरी “संगीतार्णव पारग श्री श्री श्री योगनरेन्द्र मल्ल” लेखीएको छ, यस बाहेक माथि चन्द्र र सूर्यको चिन्ह बनाएको छ।

मुद्राको पृष्ठभागमा तिनवटा ठुल ठुला त्रिकोणहरु आपसमा छेड्ने गरी बाहीय भागमा आठवटा साना त्रिकोण निकालिएका छन् र यस्को मध्य भागमा संख, सुर्य, चन्द्र, फुल, ध्वज पताक र चैत्याकार सिंदुरदानी राखीएको छ। छरीएका अक्षरमा “श्री नेपाल चूडामणि, श्री नरेन्द्रलक्ष्मीदेवी” र साथमा “८०५” अंक कुदिएको छ।

५ पाचौँ किसिमको मुद्रा



अग्रभाग पृष्ठभाग

यस मुद्राको अग्रभागमा दुईवटा खप्टिएका स्वस्तीक यन्त्र छन्। मध्यभागमा चतुष्कोणहरु छन्। कुना कुनामा साना रेखाहरु चारैतिरबाट मध्यभागको चतुष्कोणहरुको छेउसम्म तानीएका छन्। चतुष्कोणमा “श्री ३” तलको चतुष्कोण भित्र “लोक नाथ” र बिच्चमा खड्ग चित्र अंकीत गरीएको छन् भने ओरिपरि “संगीतार्णव पारग श्री श्री योगनरेन्द्र मल्लदेव” उल्लेख गरीएको छन् ।

यस् मुद्राको पृष्ठभागमा वक्ररेखाकार दुईवटा चतुष्कोणहरु मिलाएर बाहिर भागमा ८ वटा चुच्चे निस्कीने गरी बनाएको छ जस्को बिच्चमा आभरण सहितको चैत्य आकारका सिन्दुरदानी अंकित गरीएको छ जस्को बाहिर घेरीने गरी गोलो आकृति बनाएको छ र त्यसलाई आधार मानी ८ वटा कमलको पाट उत्कीर्ण गरीएको छ र हरेक पाट भित्र तिन वटा ठोप्ला राखिएको छ, जस्को स्वरुप मण्डलाकार लिएको पाईन्छ। यसमा छरीएका अक्षरमा “श्री नरेन्द्रलक्ष्मीदेवी, श्री योगलक्ष्मीदेवी” उल्लेख गरीएको छ भने साथमा “८०८” अंक पनि कुडीएको छ।

६ छैटौं किसिमको मुद्रा



अग्रभाग पृष्ठभाग

यस् मुद्राको अग्रभागमा बीचमा सानो चतुष्कोण छन् जस् भित्र “लोक नाथ” अक्षर र खड्ग अंकीत छन्, उक्त सानो चतुष्कोणलाई अर्को ठुलो चतुष्कोणले भित्र चारवटा त्रिकोण हुने गरी बनाएको छ, माथी, दायाँ र बायाँ गरी तीन वटा “श्री” छन् भने तलको त्रिकोणमा फुलको बुट्टा राखीएको छ, यसपछी अर्को दूई वटा चतुष्कोण राखीएको छ जस्को आकृतिले बाहीय भागमा चुच्चे त्रिकोण आठ वटा निकालिएको पाईन्छ। उक्त मुद्रामा छरीने गरी “संगीतार्णव पारग श्री श्री श्री योगनरेन्द्र मल्ल” लेखीएको छ, यस बाहेक माथि चन्द्र र सूर्यको चिन्ह बनाएको छ।

मुद्राको पृष्ठभागमा तिनवटा ठुल ठुला त्रिकोणहरु आपसमा छेड्ने गरी बाहीय भागमा आठवटा साना त्रिकोण निकालिएका छन् र यस्को मध्य भागमा संख, सुर्य, चन्द्र, फुल, ध्वज पताक र चैत्याकार सिंदुरदानी राखीएको छ। छरीएका अक्षरमा “श्री नेपाल चूडामणि, श्री जयलक्ष्मीदेवी” र साथमा “८०५” अंक कुदिएको छ।

७ सुकी मुद्राहरु

**अ।** सुकी मुद्रा





अग्रभाग पृष्ठभाग

योगनरेन्द्र मल्लले सुकी मुद्राहरु पनि प्रकाशनमा ल्याएको पाईन्छ, चाडीको तिनकुने सुकी मुद्राको अग्रभागको बीच्चमा आभरण सहितको खड्ग रहेको छ, छरीएको अक्षरमा "श्री श्री वीर योगनरेन्द्र" लेखएिको छ। पृष्ठभागमा बीचमा आभरणले सजीएको सिन्दूरदानीको चित्र अंकित गरीएको छ र साथै "श्री जयरक्ष्मीदेवी" लेखिएको छ यहाँ 'ल' को सट्टा 'र' उल्लेख गरीएको पाईन्छ।

यस सुकी मुद्राको अग्र र पृष्ठ भाग गरी दुबै भागमा त्रिकोण मा थोप्लो र रेखाले सृंगारीएको छ।

**आ।** सुकी मुद्रा





अग्रभाग पृष्ठभाग

यस सुकी मुद्राको अग्रभागमा बीचमा चतुष्कोण छ, जस् भित्रको माझमा एउटा ध्वजा जस्तो चित्र छन्, “श्री श्री योग, ८०४” लेखिएको छ। उक्त चतुष्कोण को चारै तिर नागबेली रेखाहरुले गोलाकार बनाएको छ। च्तुष्कोण बाट बाहिर गोलाकार बाट भित्र “नरेन्द्रमल्ल” अंकित गरीएको छ। मुद्राको पृष्ठभागमा दुईवटा त्रिकोणले परस्पर छेड्नेगरी ताराको स्वरुप दिएको छ र त्रिकोणको भित्र र बाहिर गरी हरेक कोठा कोठामा एक एक अक्षर गरी “श्री श्री तलेजुमाजु सहाय , श्री लोकनाथ” उल्लेख गरीएको छ, लोकनाथ भने ठीक मध्य भागमा राखिएको छ।

**ङ।** सुकी मुद्रा

यस् मुद्राको अग्रभागमा छेउ छेउमा थोप्ला थोप्लाहरु छन्, बीचमा फारसी ढाचाका दुई धर्काहरु छन् र मध्य भागमा आभरण सहितको खड्ग रहेको छन्, थोप्ले बुत्ताहरु यत्रतत्र रहेको छन्, र छरीएको अक्षरमा “श्री श्री जय योगनरेन्द्र मल्ल” लेखिएको छन्। पृष्ठभागको छेउ छेउमा धानका वालाबुट्टा हरुले सृन्गारीएका छन्, यस् भित्र चतुष्कोण छन् र त्यसको भित्र भागमा सिन्दूरदानी चित्र छन्, र बाहिर तिन तिर फुले बुट्टाहरु राखिएको छन्, त्यस्को तल्लो भागमा “८०५” अंक र उक्त भागमा छरीएको अक्षरमा “योगलक्ष्मीदेवी” लेखिएको छन् ॥

**८ योगनरेन्द्र मल्लको मुद्रामा अंकीत चिन्हहरु**

योगनरेन्द्र मल्लको अधिकांस मुद्राहरुमा यन्त्र हरुको प्रयोग गरीएको पाईन्छ, यो यन्त्रको प्रयोग योग नरेन्द्र मल्ल भन्दा पनी अघील्लाका शासकहरुले र उनी पछिका शासकहरुले पनि प्रयोगमा ल्याएको पाईन्छ। योगनरेन्द्र मल्लले प्रयोगमा ल्याएको मुद्राहरुमा अंकित यन्त्र चिन्हहरु निम्न प्रकारका छन्,

श्रीयन्त्र

अष्टकोण

पञ्चकोण

भूपुर यन्त्र

स्वस्तीक

चतुष्कोण

**अ।** श्रीयन्त्र



**आ।** अष्टकोण







**इ।** पञ्चकोण



**ई।** भूपुर यन्त्र



**उ।** स्वस्तीक



**ऊ।** चतुष्कोण



९ निष्कर्ष

योगनरेन्द्र मल्लको मुद्राहरुको विषयमा चर्चा गर्दा यन्त्र चिन्ह हरु अत्याधीक मात्रामा प्रयोग गर्नाले उनी बढि शाक्त धर्ममा आस्था रहेको व्यक्तिको रुपमा बुझिन्छ। उन्ले मुद्रामा यन्त्रको प्रयोग उनी अगाधीका शासकहरु बाटनै सिकेको पनि हुन सक्छ, नत्र मुद्राको शोभा बढाउन राखेको पनि हुन सक्छन्। प्रायः जस्तो योगनरेन्द्र मल्लले आफ्नो मुद्रामा स्त्रीहरुको नाम उल्लेख गरीएको पाईन्छ यस्ले के सन्देह दिन्छत भन्दा उनी सो समयमा नारीहरुलाई पनि समाजमा स्थान दिएको र उनी आफ्नो रानिहरु प्रति पनि निकै सम्मान दिएको बुझीन्छ। योगनरेन्द्र मल्लले आफ्नो शासन कालको अवधिमा विभिन्न चरणमा विभिन्न स्वरुपको मुद्राहरु निष्कासन गरीएको पाईन्छ, जस्तै मोहर, अर्ध मोहर, सुकी, दाम। उनी पाटनको एक प्रभाव शालि शासकको रुपमा पनि चिन्ने गरीन्छ ॥

## Bibliography

National Numismatic Museum, Catalogue of National Numismatic Museum, Chhauni Kathmandu, Vol- 1 2062 B.S .

जेशी सत्यमोहन, नेपाल राष्ट्रिय मुद्रा,दोस्रो संस्करण, २०४२, साझा प्रकाशन पुल्चोक ।

राष्ट्रिय मुद्रा संग्रहालय, राष्ट्रिय मुद्रा संग्रहालय स्मारिका (२०७६),छाउनी, काठमाडौं ।

खतिवडा सोमप्रशाद, अभिलेख विज्ञान एवं मुद्राशास्त्र, एम. के. पब्लिशर्स एण्ड डिष्ट्रीबयूटर्स, भोटाहिटी, काठमाडौं ।

https://www.sarc.auction/Stephen-Album-Rare-Coins-Auction-34_as58473_p5

http://www.worldofcoins.eu/forum/index.php?topic=44652.0

https://www.numisbids.com/n.php?p=lot&sid=1908&lot=240